**मञ्चमा**

| | |
|---|---|
| हर्कबहादुर चेम्जोङः | बुद्धि तामाङ |
| रामबहादुर माझीः | बिजय बराल |
| भउते परियारः | सुलक्षण भारती |
| मनमाया सुब्बाः | सिर्जना सुब्बा |
| बिर्खबहादुर चेम्जोङः | उमेश तामाङ |
| अच्छाबहादुर राईः | किरण सुनुवार |
| गाउँले यूवायुवतीहरुः | मोहम्मद नाजिर हुसेन, बिकास जोशी, आर्जेश रेग्मी, जुनु विष्ट, चन्दा राई, शारदा अधिकारी, सुरज ठकुरी, जलन लामिछाने, आर्यन गुरुङ, सारुक ताम्राकार, संयोग जीएन, अन्वेष थुलुङ । |

**नेपथ्यमा**

| | |
|---|---|
| मञ्च परिकल्पनाः | राजन खतिवडा |
| मञ्च सहयोगीः | बिजय बराल/सुलक्षण भारती |
| मञ्च निर्माणः | हुम बिसी |
| प्रकाश परिकल्पनाः | बुद्धि तामाङ |
| प्रकाश परिचालनः | सुरज यादव |
| प्रत्यक्ष संगीतः | आधा सुर ब्याण्ड |
| भेषभूषाः | सिर्जना सुब्बा/मोहम्मद नाजिर हुसेन |
| कोरियोग्राफः | रवि शेर्मा |
| प्रचार सामग्रीः | सजन थापामगर/बिकास जोशी |
| बजार व्यवस्थापनः | सोमनाथ खनाल/प्रदिपकुमार चौधरी/सुरेश कार्की |
| बक्स अफिसः | सृजना अधिकारी |
| कार्यालय व्यवस्थापनः | नविना अर्याल |
| मञ्च व्यवस्थापनः | प्रदिपकुमार चौधरी |
| नाट्य आलेखः | सोमनाथ खनाल |
| परिकल्पना/निर्देशनः | दयाहाङ राई |

**धन्यवाद**

उपेन्द्र सुब्बा, रामबाबु गुरुङ, निश्चल बस्नेत, चन्द्रवीर तुम्बापो, पदम सुब्बा, पुरुषोत्तम प्रधान, साम्तेन भुटिया, आदिवासी जनजाति राष्ट्रिय उत्थान महासंघ आदि ।

**प्रकाशन सहयोगी**




**सम्पर्क विवरण**

मण्डला थिएटर नेपाल
अनामनगर, काठमाडौं
फोन नं. ०१६६२४२६६
९८४१३५५५६०
इमेलः info@mandalatheatre.com
वेभः www.mandalatheatre.com




# मितज्यू




**मितिः २०७० पुष २६ गतेदेखि माघ २६ गतेसम्म**
**(सोमबारबाहेक हरेक दिन)**
**स्थानः मण्डला नाटकघर, अनामनगर (सिंहदरवार पूर्वी गेटअगाडि)**
**समयः साँझ ४:३० बजेदेखि**
**FIND US ON FACEBOOK: www.facebook.com/Mandala TheatreNepal**



**मितज्यू** नाटक दुईजना बृद्धहरुले आफनो किशोरवयतिर फर्केर हेर्दा देखिने 'फ्लाशब्याक' कथा हो । उमेरमा असाध्यै रौंशे भएर बिताएका दुई मितहरु उमेर बित्दै जाँदा कस्तो अनुभव गर्छन होला भन्ने कुराको अनुमान नाटकमा गरिएको छ । यो नाटक बुढेशकालको दुःख मात्रै होइन, बरु तारुण्यका रुमानी सपनाहरुको पुनरावलोकन पनि हो । नपाली संस्कृतिमा लोकप्रिय रहेको मितेरी साइनोअर्न्तगत एक जोडा मितको अन्तरकुन्तर कथा यस नाटकमा प्रस्तुत गरिएको छ । मितेरी साइनोसँगै उनीहरुका अन्य सम्बन्ध, तिनका उतारचढाव र तिनीहरुले दुई मितको जीवनमा पारेको प्रभावलाई नाटकको घटनाक्रममा बुनिएको छ । नाटकमा 'फेन्टासी'को भरपूर उपयोग गरिएको छ तर फेन्टासीसँगै दुई वृद्धहरुको जीवनदर्शन पनि समेटिएको छ ।



मनुष्य चोलामा, विशेषगरी हाम्रो सभ्यता र संस्कृतिमा, मितेरी साइनोले गजवको अर्थ राखेको हुन्छ । नाटक तयार गर्दैगर्दा मित लाउने चलन कहाँबाट कसरी शुरु भयो भन्ने कूतुहलता आफैंमा भएपनि मैले त्यसको जवाफ यो नाटकमा खोजेको छैन । सामान्यतः भन्दा मैले इतिहास खोतल्न यो नाटक तयार पारेको पनि होइन । नाटक गर्नुको पछाडि हरेकको आआफनो कारण र प्रक्रिया हुन्छ । मसँग खास ठूलो कारण र प्रक्रिया छैन । साहित्य तथा कलाको भाषामा एउटा शब्दावली अत्यन्तै प्रख्यात छ– 'क्लिसे' । यसका अर्थ हुन्छ एकै किसिमका कामहरु दोहोरीरहनु । मैले नाटक गर्दा हरेकपटक यो शब्दको अत्यन्त नजिकबाट गुज्रीरहेको जस्तो लाग्छ । अर्थात म जहिले एउटै प्रक्रियाबाट काम गरीरहेको हुन्छु । एउटा अभिनेताको रुपमा काम गर्दा मलाई जहिले पनि चरित्र, स्थान, समय र उनीहरुको सम्बन्ध खोतल्न मन पर्छ । जव म निर्देशक भएर मञ्चमा उत्रिन्छु, म आफनो स्वाभाविक प्रक्रिया छोडन सक्दिन । यो मेरो कमजोरी पनि हुनसक्छ । मैले गरीआएका सवै नाटकहरु चरित्र, स्थान, समय र उनीहरुको सम्बन्धको उपज हुन । मितज्यू नाटक पनि म आफूले देखेभोगेका र सुनेका त्यस्तै चरित्र, स्थान, समय र त्यसबाट उब्जेको अनौठो सम्बन्धको एउटा 'एक्सपेरिमेन्टल आउटकम' हो जसमाथि मैले भौगोलिक–साँस्कृतिक रंग भर्ने प्रयास गरेको छु ।
नाटकको पूर्वाभ्यास शुरुगर्नुअघि 'मितज्यू' एउटा 'कोर आइडिया' मात्र थियो । यो 'कोर आइडिया' लाई तन्काउन रंगकर्मी दाई राज थापा, कवि दाई उपेन्द्र सुब्बा, कवि साथी चन्द्रबीर तुम्बापो, साथीहरु निश्चल बस्नेत, रामबाबु गुरुङ, साम्तेन भुटिया, पुरुषोत्तम प्रधान र रवि शेर्माको ठूलो भूमिका छ । तन्किएको बिचारलाई नाटक बनाएर लेखे रंगकर्मी साथी सोमनाथ खनालले । मञ्च परिकल्पनाकारका रुपमा साथीहरु राजन खतिवडा र बिजय बराललले मेरो मष्तिष्क र नाटकको आलेखमा भएको भूगोललाई मञ्चमा दुरुस्तै ल्याइदिए । खोजेकैजस्तो भेषभूषा तयार पारे सिर्जना सुब्बा र नाजिर हुसेनले । साथी सजन थापा र बिकास जोशीले मैले देखाउन खोजेको सम्बन्धको कथालाई पोस्टरमा उतारिदिए । आधासुर ब्याण्डको संगीतले फेरि एकपटक उर्जा थपिदियो । मितज्यूको मञ्चमा उभिने हाम्रा सवै कलाकारहरुले नाटकलाई सबल दृष्यावली बनाउन अथक मेहेनत गर्नुभएको छ । म सवैप्रति आभारो हुँदै हौसला दिनुहुने दर्शकहरुप्रति हार्दिक नमन गर्न चाहन्छु ।

**–दयाहाङ राई**

मैले कतिपय मित्रताहरु झगडामा गएर समापन भएको देखेको छु । हाम्रो पूर्वतिर चैं झगडाबाट एउटा मित्रता शुरु हुन्छ जसलाई बुढापाकाहरुले टाउको ठोकाएर मित्रता गाँसिदिन्छन र भनिदिन्छन –'भालुमित' । म सानो छँदा मलाई मेरा बाले आफनो भालुमितको कहानी सुनाउनुहुन्थ्यो । दया सरको 'कोर आइडिया' पनि त्यस्तै भालुमितको सम्बन्धमाथि थियो । मलाई त्यो कोर आइडियाले तान्यो अनि मैले लेख्न शुरु गरे ।
यो नाटक होइन, फेन्टासी हो । सम्बन्धको फेन्टासी, आफूभित्र भएर आफैंलाई सम्हाल्न/डोर्‍याउन नसक्ने जोशको फेन्टासी अनि मरेर जान्पर्छ भन्ने डरको फेन्टासी । मान्छे कति फेन्टासीमय हुँदोरहेछ भने मलामी बटुल्नकै लागि भएपनि अविष्मरणीय मन्पर्छ भन्ने सोच्छ । गौरवशाली बाँच्न नसकेपनि गौरवशाली मरणको भोकले मान्छेलाई मान्छे बनाएर उभ्याएको हुँदोरहेछ । यस्तै फेन्टासीले उक्साएर मैले यो नाटक लेखे । लेखें के भन्नु, दया दाईले देखेको फेन्टासीलाई आफनै सम्झीबसे । शब्दका खातहरुको पर्खाल लगाए, दृश्य बनाए र दृश्यभित्र कलाकारहरुलाई थुनिदिए । अव नाटक मञ्चनभरी ती कलाकारहरु मेरो (हाम्रो) फन्टासीलाई आफनो सम्झेर रमाउँछन, उफ्रन्छन र थाक्छन तर थाकेजस्तो गर्दैनन । पर्दा नभएको रंगमञ्चमा पर्दा खस्दैनन । बरु बत्तीहरु निभ्छन अनि जीवनजस्तै एउटा फेन्टासी पनि सकिन्छ । दर्शकहरु नाटक सकियो भन्दै मञ्च बाहिर निस्कन्छन र जान्छन । अँध्यारोमा बाँकि रहन्छन त केवल हाम्रा फेन्टासी र फेन्टासीमा बाँच्न बाध्य हामी कलाकारहरु । जीवन दुई तरिकाले बाचिन्छ रे, कि त झलेर कि त पेलेर । हामी खेलेर बाँच्दैछौं । र यसमा कसैलाई कुनै आपत्ती पनि छैन ।
मेरा धेरै साथीहरु भन्छन– मैले लेख्नुपर्छ । मलाई पनि यस्तै लाग्छ तर लेख्नु मेरो पेशा होइन । म त झुक्किएर लेख्छु । यसपटक पनि म झुक्किएको छु । म यसरी झुक्किएकोमा धेरै जना खुशी भएका छन । मेरा हितैषी मित्रहरु बिकास, अनिल, रोहिणी, सुलक्षण, प्रकाश दाई अनि अभिभावकजस्तै मण्डलाका आदरणीय सहकर्मीहरु यसरी खुशी हुनेको अग्रपंक्तिमा पर्छन होला । यो मेरो पनि खुशी हो । म सवैलाई धन्यवाद भन्न चाहन्छु । एउटै मञ्चमा काम गर्ने र हुकने मौका दिनुभएकोमा मण्डला थिएटर नेपालका राजन दाई, दया दाई, सिर्जना दिदी, बुद्धि, बिजय, बिकास, नाजिर, सुरज, उमेश, प्रदिप र सृजनाप्रति कृतज्ञता व्यक्त गर्दछु ।
दर्शकहरुले देखाउनु भएको माया र सदभावप्रति अनुगृहित छु ।
नाटक सकिएपछि के लाग्छ, प्रतिक्रिया दिनुहोला । यसले मेरोलागि ठूलो माने राख्छ ।

**–सोमनाथ खनाल**

नाटक हेरीसकेपछि हामीलाई प्रतिक्रिया दिन नबिर्सनुहोला ।